# महेन्द्र मल्लको स्थिति

प्रजा हो. हाम्रा छिमेकी पुकाटोल जावाहाल रैति थकाली मान्या १४ टोल गोचा गुमाजु मान्या झा कीर्तिकान्त सुर्जैखु डङ्गोल कौचा देउभाजु उपाजा ब्रह्मनर्सि उपाध्याय सबै २६ टोल वस्या. क्या गरि नेपालमा अनिकाल असिन्या न पर्न्या हो भन्या सभ वस्या. अथ काली ब्रह्मचर्य तान्त्रिक (व) स्या. पुरश्चरण गर्दा यो थिति महाराज महेन्द्रमल्ललाई आधा रात्रि शुक्ल पक्षमा तलेजु मा बाट स्वपना भये.

प्रजामा जुवा न खेलनु. सधैं प्रजाको हित गर्नु. सच्चा बोलनु. टोल गाउँको कचहरी गाउँटोलैमा बिलाई दिन्या गर्नु. कचहरी गाउँ टोलको यौटा पक्का तवर्को थकाली मान्या वसी अन्यायको न्याय गर्नु. ढिकी जातो लुगा बुन्ने तान टुकि कैल्है पनि खाली न राखनु. पटासि घर बुना खाडि कोरा यौटै किसिमबाट न बुन्या अनर्थ हुन्या छ. पानां सन्दानी चिराखको लागी वनमागै देवदारूबाट बालनु र कपडा बन्दै लग्या पछि कागत जस्तो मिहीं र सफेत कपडा हुन्या छ. तेसो भया पछि अरू गावलका र मधिले राजाहरूलाई बिक्री गरी धनीं हुन्या छौं. अरू राजाहरू भया छेउ मुलुकमा नौला भनाउदा काम सिकि भाँडा वर्तनको कामहरू सिकि काम चोरी ल्यायामा आफ्नो मुलुकको धाक र प्रजाको रवाफ् बढने छ.



काम गर्दा हुदी राज्य राज्यमा गुप्तचर गै नौला किसिमका कामहरू सिकि आउनु. काम सिकन जादा थाहा पाई कैद गर्‍यो भन्या आफ्नु मुलुकको गुह्य कसैलाई नभन्नु. मारे मर्नु. आफ्ना रूडि वुडि वुढापाका कुलले गर्‍याका राखेका धर्म न गुमाई चोखो कामहरू सिकि ल्याउन्या गर्नु. अर्को थिति झ्याली पिटाई दिन्या छ. राज्य भरमा आधा दिन देखि कसैले भोको न वस्नु, मैले तिमिहरूको भात खायाको खबर ली आफु खान वस्दा पेटमा

वतरस भरीई मुखबाट अमिलो पानी आउन्या अजीर्ण को व्यथा भयो. त्यसो भयेकाले राज्य भर बेहान ९ —१० घडि दिन भित्रै सवैले भात खान्या गर्नु. बेलुका ८ घडि देखि १० घडिभित्रै खाई सकनु. १० घडिबाट १ निमेष नाग्यो कि घण्टा बजाई दिन्या गर्नु. कोहीले नमान्या सजायँ गर्नु. प्रजा भोकै भएछ भन्या त्यस दिनको पापको डंड टोलको थकाळी मान्याहरूले भोगन्या छन् .

---

साभार- डा. जगदीशचन्द्र रेग्मी, नेपालको वैधानिक परम्परा (प्रारम्भदेखि ई. १८४६ सम्म), पाठ्यक्रम विकास केन्द्र, त्रिभुवन विश्वविद्यालय, काठमाण्डौ, प्रथम संस्करण, २०३६ कार्तिक ८